# नेपाल सरकार
## शान्ति तथा पुनर्निर्माण मन्त्रालय
## सिंह दरवार, काठमाडौ

***सूचनाको हक सम्वन्धी ऐन, २०६४ को दफा ५(३) बमोजिम प्रकाशित विवरण***

आ.व. २०७१/०७२(२०७१ माघ देखि २०७१ चैत्र सम्म- ३ महिना)

## १. निकायको स्वरूप र प्रकृति

नेपालमा शान्ति प्रयासहरुको व्यबस्थापन गर्ने सम्बन्धमा तत्कालीन सरकारले गरेका विभिन्न प्रयासहरुसंग शान्ति तथा पुनर्निर्माण मन्त्रालयको इतिहास गाँसिएको छ ।सरकार र नेपाल कम्युनिष्ट पार्टी (माओवादी) बीच २०५८ सालदेखि शुरु भएको शान्ति वार्ता प्रयासमा संस्थागत व्यबस्थाको अपरिहार्यतालाई मनन गरी दिगो शान्ति स्थापनार्थ सरकारलाई प्राविधिक, भौतिक तथा अन्य सहयोग उपलब्ध गराउने संस्थागत व्यबस्था गर्ने सम्बन्धमा सिफारिस पेश गर्न मन्त्रिपरिषद्ले २०५९।११।८ मा गठन गरेको कार्यदलले शान्ति समन्वय तथा व्यबस्थापन केन्द्र गठन गर्न सरकारलाई सिफारिस गरेको थियो । तत्पश्चात शान्ति वार्ता टोलीलाई कार्य सम्पादनको क्रममा आबश्यक समन्वय र सहयोग उपलब्ध गराउन तत्कालीन प्रधानमन्त्रीको कार्यालय अन्तरगत रहने गरी ६ बुँदे कार्यक्षेत्र र जिम्मेवारी सहित मिति २०६०।२।२९ मा शान्ति वार्ता समन्वय सचिवालयको व्यबस्था गरेको थियो । तीन चरणका शान्ति वार्ताहरुमा त्यस सचिवालयले सहयोग गरेको थियो र ती वार्ताहरु बिफल भएपछि सरकारले शान्ति प्रक्रियालाई पुनः अघि बढाउन र साझा राजनीतिक अवधारणा तयार गर्ने उद्देश्यले सम्माननीय प्रधानमन्त्रीको अध्यक्षतामा मिति २०६१।४।२८ मा एक उच्चस्तरीय शान्ति समिति गठन गरी मिति २०६१।५।१५ मा सो समितिको काम, कर्तब्य र अधिकार तोकी सो समितिलाई सहयोग गर्न मन्त्रिपरिषद्को मिति २०६१।५।२९ को बैठकले सरकारको मुख्य सचिवको नेतृत्वमा एक उच्चस्तरीय शान्ति समितिको सचिवालयको स्थापना गरेको थियो । सरकार र माओवादी पक्षबीच भएका विभिन्न चरणका वार्ताहरु बिफल भएपछि मन्त्रिपरिषद्को मिति २०६१।१२।३ को निर्णयअनुसार साबिकको उच्चस्तरीय शान्ति समिति र अन्तरगतका उप-समितिहरुको बिघटन भयो । तर सो अन्तरगत रहेको उच्चस्तरीय शान्ति समितिको सचिवालयलाई कायमै राखिएकोमा मन्त्रिपरिषद्को २०६२।७।३ को निर्णयअनुसार सचिवालयको नाम शान्ति सचिवालय तोकियो | नेपाल सरकार (मन्त्रिपरिषद्) को मिति २०६३।१२।१८ को निर्णयबाट शान्ति सचिवालयलाई खारेज गरी साविक शान्ति सचिवालयले सम्पादन गर्दै आएको सम्पूर्ण कामहरुको अतिरिक्त द्वन्द्वबाट क्षति भएका भौतिक संरचनाको पुनर्निर्माण , द्वन्द्व पीडित व्यक्तिहरुको राहत र पुनःस्थापन, सत्य निरुपण तथा मेलमिलाप आयोग, उच्चस्तरीय अनुगमन समिति , बिद्रोही पक्षको लडाकुहरुको शिविर व्यवस्थापन आदि थप काम , कर्तव्य र अधिकार समेत तोकी यस शान्ति तथा पुनर्निर्माण मन्त्रालयको स्थापना भएको छ |

## २. निकायको काम कर्तब्य र अधिकार

**मिति २०६९/२/५** गते नेपाल सरकार, मन्त्रिपरिषद्बाट स्वीकृत नेपाल सरकार (कार्य विभाजन) नियमावली, २०६९ अनुसार शान्ति तथा पुनर्निर्माण मन्त्रालयले देहायका विषयहरुमा काम गर्ने गरी क्षेत्राधिकार निर्धारण गरिएको छ :

- शान्ति स्थापना, द्वन्द्व व्यवस्थापन तथा विकास र द्वन्द्वबाट क्षति भएका भौतिक संरचनाको पुनर्निर्माणका लागि तत्कालीन र दीर्घकालीन नीति, रणनीति, योजना तथा कार्यक्रमको तर्जुमा, कार्यान्वयन, अनुगमन र मूल्याङ्कन; द्वन्द्वपीडित क्षेत्रको सामाजिक तथा आर्थिक विकासको नीति, रणनीति र कार्यक्रम;
- विस्तृत शान्ति सम्झौतालगायतका अन्य सम्झौता, सहमति र निर्णयको कार्यान्वयन, अनुगमन तथा मूल्याङ्कन;
- दिगो शान्ति कायम गर्न आवश्यक संस्थागत, प्रक्रियागत तथा प्राविधिक विषय;
- शान्ति स्थापना तथा द्वन्द्व व्यवस्थापनसम्बन्धी अध्ययन, विश्लेषण तथा अनुभवको आदान-प्रदान;
- द्वन्द्वबाट पीडित तथा विस्थापित व्यक्तिको राहत, आर्थिक सहायता तथा पुनःस्थापन;
- द्वन्द्व-संवेदनशील प्रणालीबारे अध्ययन तथा अनुसन्धान;
- शान्ति स्थापना तथा द्वन्द्वको व्यवस्थापनसम्बन्धी सूचना, अध्ययन सामग्री र अध्ययन प्रतिवेदनको अभिलेख केन्द्र तथा शान्ति र द्वन्द्व व्यवस्थापनको प्राविधिक स्रोतकेन्द्रसम्बन्धी;

- शान्ति प्रक्रिया र द्वन्द्वको सङ्क्रमणकालीन व्यवस्थापन;
- द्वन्द्वको कारणबाट क्षति भएका भौतिक संरचनाको पुनर्निर्माण तथा पुनःस्थापनाको योजना तर्जुमा , कार्यान्वयन तथा क्षेत्रगत निकायसँगको समन्वय;
- शान्ति कोषबाट सञ्चालित योजना तथा कार्यक्रमको सञ्चालन र अनुगमन;
- माओवादी सेनाका लडाकुको शिविर व्यवस्थापन र रेखदेख;
- शान्ति स्थापना र द्वन्द्व व्यवस्थापनसँग सम्बन्धित सरकारी, गैरसरकारी तथा अन्तर्राष्ट्रिय सङ्घ-संस्थाको सम्पर्क;
- सत्य निरूपण तथा मेलमिलाप आयोग;
- बेपत्तासम्बन्धी छानबिन आयोग;शान्ति तथा पुनःस्थापनासम्बन्धी परामर्श समिति;
- शान्ति प्रक्रियासम्बन्धी उच्चस्तरीय अनुगमन समिति;
- स्थानीय शान्ति समिति ।

## ३. निकायमा रहने कर्मचारी संख्या र कार्य विवरण

मन्त्रालयलाई आवश्यक पर्ने कर्मचारी नेपाल सरकारले व्यवस्था गर्दछ | हाल मन्त्रालयमा ....जना कर्मचारीहरु छन |

स्वीकृत कर्मचारी दरवन्दी संख्या ९३ जना

स्थायी कर्मचारी संख्या ६७ जना (रिक्त उपसचिव ३, शा.अ. २)

करार सेवाका कर्मचारी २६ जना

जम्मा कर्मचारी संख्या ९३.जना

मन्त्रालयको संगठानिक चार्ट अनुसूची १ मा संलग्न छ |

कार्य विवरण अनुसार, यस मन्त्रालयमा निम्न बमोजिमका महाशाखा र शाखाहरु रहेका छन |

### प्रशासन योजना तथा वैदेशिक समन्यव महाशाखा :

- मन्त्रालयको प्रशासनिक, सांगठनिक तथा आर्थिक प्रशासन सम्बन्धी संपूर्ण कार्यहरु गर्ने,
- द्वन्द्व संवेदनशील योजना र द्वन्द्व संवेदनशील बजेट तर्जुमा गर्न राष्ट्रिय योजना आयोग, अर्थ मन्त्रालय तथा अन्य केन्द्रीय निकायहरुसँग समन्वय गर्ने,
- शान्ति निर्माण तथा द्वन्द्व व्यवस्थापन सम्बन्धमा विभिन्न मन्त्रालय एवं निकायहरुका शान्ति सम्पर्क व्यक्ति/विन्दु (Peace Focal Persons\Points) सँग समन्वय गर्ने र उनिहरुको क्षमता विकास सम्बन्धी कार्य गर्ने,
- द्वन्द्व व्यवस्थापन तथा शान्ति सम्बन्धी विषयका दक्ष जनशक्ति तथा मानव श्रोत विकास सम्बन्धी कार्यहरु गर्ने,
- आवधिक योजनाद्वारा परिलक्षित विकास तथा सामाजिक शान्तिका उद्देश्य परिपूर्तिका लागि आवधिक योजना, राष्ट्रिय विकास कार्यक्रम र शान्ति प्रवर्द्धनका कार्यक्रमबीच अन्तरमन्त्रालय समन्वय गर्ने, गराउने,
- मन्त्रालयको सम्पर्क बिन्दु तथा प्रवक्ताको रुपमा कार्य गर्ने,
- द्वन्द्वको शान्तिपूर्ण रुपान्तरणका लागि आदिवासी-जनजाति, दलित, महिला, अपांग, उपेक्षित तथा उत्पीडित वर्ग र समुदाय लक्षित र द्वन्द्व सम्वेदनशील समावेशीकरण, सबलीकरण र मूलप्रवाहीकरणका लागि योजना तथा कार्यक्रम तर्जुमा एवं संचालनमा अन्तरमहाशाखा तथा अन्तर मन्त्रालय समन्वय गर्ने,
- मन्त्रालयबाट सञ्चालित योजना तथा कार्यक्रमहरुको आवधिक समीक्षा र नियमित अनुगमन तथा मूल्यांकन सम्बन्धी कार्य गर्ने,
- शान्ति संयन्त्रहरुको सञ्चालनमा जनशक्ति एवं अन्य स्रोत साधनको व्यवस्थापन गर्ने,
- मन्त्रालय र अन्तर्गत निकायको लागि वार्षिक कार्यक्रम र बजेटको तर्जुमा एवं कार्यक्रम कार्यान्वयनको लागि स्वीकृत बजेटको निकासा, बाँडफाँड तथा परिचालन गर्ने,
- मन्त्रालयको क्षमता विकास तथा शान्ति प्रक्रियाको सुदृढीकरणका सन्दर्भमा प्राप्त हुने द्विपक्षीय एवं बहुपक्षीय सहयोगको परिचालन गर्ने,
- मन्त्रालयबाट संचालन हुने योजना तथा कार्यक्रमहरुमा द्वन्द्व निरोधात्मक (Conflict Preventive) र द्वन्द्व संवेदनशील (Conflict Sensitive) पद्धति समाहित गर्न अन्तर महाशाखा एवं अन्तर्गत विभाग तथा आयोजनाहरुसँग समन्वय गर्ने,
- अन्य महाशाखाहरुमा किटानी व्यवस्था भएको बाहेकका अन्य कार्यहरु गर्ने गराउने ।

### कानुन तथा संचार महाशाखा

- प्रचलित कानून, सम्झौता तथा सहमतिले तय गरे बमोजिमका शान्ति संयन्त्रहरुको लागि आवश्यक कानून मस्यौदा गर्ने,
- मानव अधिकारको संरक्षण एवं प्रवर्द्धन सम्बन्धी आवश्यक कार्यहरु गर्ने,
- विभिन्न मानव अधिकार संघ संगठनहरुबाट प्राप्त सुझाव, सिफारिस एवं प्रतिवेदनहरुको कार्यान्वयन गर्न आवश्यक सहयोग गर्ने,

- शान्ति संयन्त्रहरुबाट प्राप्त हुने सुझावहरु र नेपाल स्थित संयुक्त राष्ट्र संघीय मानव अधिकार उच्चायुक्तको कार्यालय तथा राष्ट्रिय मानव अधिकार आयोगबाट प्राप्त सुझाव, सिफारिश र प्रतिवेदन कार्यान्वयन गर्ने गराउने,
- नेपाल पक्ष भएको शान्ति र द्वन्द्व व्यवस्थापनसँग सम्बन्धित अन्तर्राष्ट्रिय सन्धि सम्झौताहरुको कार्यान्वयन सम्बन्धमा सम्पर्क विन्दुको रुपमा कार्य गर्ने,
- शान्ति प्रक्रिया, द्वन्द्व व्यवस्थापन, पुनःस्थापन, पुनर्निर्माण, संक्रमणकालीन न्याय जस्ता विषयमा पर्याप्त श्रोत र अध्ययन सामग्रीको व्यवस्था गर्ने,
- मुलुकमा दिगो शान्ति स्थापनाका लागि राष्ट्रिय एवं अन्तर्राष्ट्रिय स्तरमा भएका अध्ययन प्रतिवेदनहरुको संग्रह (Depositary Centre) गर्ने, प्राविधिज्ञहरु सहितको स्रोत केन्द्र (Resource Centre) र पुस्तकालयको विकास तथा संचालन गर्ने,
- शान्ति सञ्चार अभियान, प्रचार प्रसार र सूचना सम्बन्धी कार्यक्रम संचालन गर्ने, सरकारी तथा गैरसरकारी क्षेत्रबाट संचालन हुने शान्ति संचार, प्रचार प्रसार तथा प्रवर्द्धन सम्बन्धी कार्यमा समन्वय र एकरुपता ल्याउने,
- शान्ति प्रक्रिया र वार्ताका सम्बन्धमा सरकार, नागरिक समाज, आम सञ्चारकर्मी तथा सञ्चार माध्यमबीच सूचना आदान प्रदान गर्ने,
- मन्त्रालयको हित र सरोकार सम्बन्धी विषयमा मन्त्रालयको तर्फबाट कानूनी प्रतिरक्षा गर्ने,
- मन्त्रालयको कार्यक्षेत्रभित्र पर्ने विषयमा कानूनी राय दिने,
- द्वन्द्व सिर्जना गर्ने खालका विद्यमान कानूनी प्रावधानहरुको अध्ययन गरी सुधारका लागि आवश्यक पहल गर्ने,
- द्वन्द्व, शान्ति तथा संक्रमणकालीन न्याय लगायतका शान्ति प्रक्रियासँग सम्बन्धित विविध विषयका विज्ञहरुको सूची (Roster) तयार गर्ने र
- मन्त्रालयको Web Site अध्यावधिक गर्ने,
- मन्त्रालयको सूचना प्रविधि व्यवस्थापन सम्बन्धी कार्य गर्ने,
- मातहतका शाखाहरुको तोकिएबमोजिमको प्रशासनिक कार्यहरु गर्ने ।

## शान्ति संयन्त्र समन्वय महाशाखा

- शान्ति प्रक्रियालाई दीगो र स्थायी बनाउन गठन गरिने विभिन्न आयोग, समिति बीच समन्वय गर्ने ।
- गठन गरिएका आयोग एवं समितिहरुको लागि आबश्यक साधन स्रोत एवं जनशक्ति व्यवस्थापन गर्ने,
- दिगो शान्ति कायम गर्न आवश्यक संस्थागत, प्रक्रियागत एवं प्राविधिक कार्यहरु गर्ने,
- शान्ति संयन्त्रहरुबाट प्राप्त सम्बन्धित राय सुझाव कार्यान्वयन गर्ने,
- सत्य निरुपण तथा मेलमिलाप आयोग, राष्ट्रिय शान्ति तथा पुनःस्थापन आयोग, बेपत्ता नागरिक छानबीन आयोग र अन्य आयोग तथा समितिहरु सम्बन्धी समन्वयात्मक कार्य गर्ने,
- द्वन्द्वको शान्तिपूर्ण रुपान्तरणको लागि शान्ति प्रक्रियालाई स्थानीय तहबाटै संस्थागत गर्दै लैजान स्थानीय शान्ति समितिहरुको गठन, संचालन, परिचालन एवं समन्वय सम्बन्धी कार्यहरु गर्ने,
- द्वन्द्व र शान्ति प्रक्रियाका सम्बन्धमा शान्ति संयन्त्रको लागि आबश्यक पर्ने जनशक्ति जुटाउन तालिम, पूनर्ताजगी तालिम, प्रशिक्षक प्रशिक्षण सम्बन्धी तालीमहरुको योजना र व्यवस्थापन गर्ने ।
- मातहतका शाखाहरुको तोकिए बमोजिमको प्रशासनिक कार्यहरु गर्ने,

## राहत तथा पुनस्थापना महाशाखा

- द्वन्द्वबाट पीडित, विस्थापित तथा द्वन्द्वबाट प्रत्यक्ष रुपमा प्रभावित भएकाहरुको पुनःस्थापन सम्बन्धी नीति, रणनीति तथा कार्यक्रम तयार गर्ने र कार्यान्वयन गर्ने, गराउने ।
- द्वन्द्वका घाउहरुको दीर्घकालिन समन ९ज्भबष्लिन० का लागि पुनःस्थापन (Rehabilitation) तथा पुनसामाजिकीकरण (Reconciliation) का माध्यमहरुको पहिचान सहितका नीति, रणनीति तर्जुमा गर्ने
- द्वन्द्वपीडित व्यक्ति-परिवार तथा संरचनाको वर्गीकरण अनुसारको तथ्यांक अद्यावधिक राख्ने, राख्न लगाउने,
- द्वन्द्वपीडित तथा द्वन्द्व प्रभावित व्यक्ति-परिवारको आवश्यकताको पहिचान र सो सम्बन्धी अध्ययन, अनुसन्धान गर्ने, गराउने,
- द्वन्द्वपीडितहरुको क्षमता विकासको लागि सीप विकास सम्बन्धि तालिम र आय-आर्जनका विविध कार्यक्रमहरुको तर्जूमा गरी कार्यान्वयनको कार्ययोजना तयार गर्ने गराउने ।
- द्वन्द्वपीडित व्यक्तिहरुको पुनःस्थापन तथा पुनर्सामाजिकीकरणका लागि दीर्घकालीन नीति तयार गर्ने । सो को आधारमा राहत तथा आर्थिक सहायता सम्बन्धी मापदण्ड, निर्देशिका र कार्यविधि तयार गर्ने,
- आन्तरिक रुपमा विस्थापित व्यक्तिहरुलाई राहत तथा आर्थिक सहायता उपलब्ध गराउने एवं उनीहरुको पुनःस्थापन कार्यको अनुगमन र अभिलेखन गर्ने, गराउने,
- जनआन्दोलनका पीडितहरु, बारुदी सुरुङको विष्फोट एवं विस्तृत शान्ति सम्झौता पश्चात घटित घटनाबाट पीडितहरुलाई आर्थिक सहायता उपलब्ध गराउने विषयहरु,

- द्वन्द्वको अवधिमा मानव अधिकारको गम्भीर उल्लंघनबाट पीडितहरुको सम्बन्धमा राष्ट्रिय मानव अधिकार आयोग तथा अदालतबाट प्राप्त निर्देशन अनुसारका कार्य,
- सशस्त्र द्वन्द्वको क्रममा मानसिक रुपले गम्भीर आघात पुगी पीडित भएकाहरुका लागि मनो-सामाजिक परामर्श र उपचार (psycho-social counseling and healing) सम्बन्धी विषय र यस सम्बन्धमा सरकारी निकाय निजी क्षेत्र र गैरसरकारी संस्थाहरुसँग समन्वय र सहकार्य गर्ने,
- जनआन्दोलन र द्वन्द्वका मृतक एवं घाइतेका आश्रितहरुलाई मासिक वृत्ति, आर्थिक सहायता र बालबालिकालाई छात्रवृत्ति एवं अपहरणमा परेका व्यक्तिलाई आर्थिक सहायता सम्बन्धी विषय,
- पीडितहरुलाई कानूनी सहायता, घाइते एवं अपांगहरुको उपचार उनिहरुको सुरक्षार्थ आवश्यक समन्वय, मार्गदर्शन र सहयोग सम्बन्धी कार्यक्रम र कार्ययोजना,
- सरकारी, गैरसरकारी संस्था र निजी क्षेत्र समेतको साझेदारीमा द्वन्द्वपीडित एवं विस्थापितहरुको पुनःस्थापनलाई दिगो र सुनिश्चित गर्नका लागि सामाजिक/सांस्कृतिक सद्भाव, शान्ति, एकता र मेलमिलापलाई प्रोत्साहित गर्ने कार्यक्रमहरुको तर्जुमा र कार्यान्वयन गर्ने, गराउने,
- दिगो शान्ति कायम गर्न आवश्यक संस्थागत, प्रक्रियागत एवं प्राविधिक विषयहरु,
- विस्तृत शान्ति सम्झौता लगायत अन्य सम्झौता, सहमतिहरुको महाशाखा सम्बन्धी विषयको कार्यान्वयन गर्ने, गराउने ।
- मातहत शाखाका कर्मचारीहरुको तोकिए बमोजिमका प्रशासनिक कार्यहरु गर्ने ।

## द्वन्द व्यबस्थापन महाशाखा

- द्वन्द्व व्यवस्थापनसम्बन्धी अध्ययन, विश्लेषण गर्ने तथा द्वन्द्व व्यवस्थापन नीति तयार गर्ने र सो नीति अन्तर्गत रही मन्त्रालयहरुको लागि द्वन्द्व व्यवस्थापनसम्बन्धी क्षेत्रगत राष्ट्रिय नीति तयार गर्न सहयोग गर्ने र नीति कार्यान्वयनको अनुगमन गर्ने,
- द्वन्द्वका प्रभावहरुको तथ्यांक संकलन तथा बिश्लेषण गरी द्वन्द्वका प्रभावहरु न्यूनिकरण गर्ने कार्यक्रमहरु सञ्चालन गर्ने गराउने,
- द्वन्द्वरत पक्षहरुसंग शान्ति वार्ता सञ्चालनमा वार्ताटोली वा वार्ताकारलाई सहयोग तथा समन्वय गर्ने,
- शान्ति वार्ताको तयारी, वार्ताका रणनीति कार्यनीति तथा कार्ययोजना तयार गर्ने,
- मुलुकको द्वन्द्व व्यवस्थापन गर्न शान्ति वार्ता तथा सम्झौताका लागि सम्बद्ध पक्षहरुसंग सम्पर्क गर्ने,
- द्वन्द्व व्यवस्थापन तथा शान्ति वार्ताका लागि राजनैतिक दलहरु, सम्बन्धित विज्ञहरु, गैरसरकारी क्षेत्र तथा नागरिक समाजको सहयोग र समर्थन जुटाउने,
- शान्ति वार्ता प्रकृयाको व्यवस्थापन कार्य गर्ने,
- शान्ति वार्ता प्रकृया र वार्ता कार्यको अभिलेख राख्ने,
- मुलुकमा दिगो शान्ति कायम गर्न आवश्यक संस्थागत एवं प्रक्रियागत संयन्त्रहरुको पहिचान, गठन एवं परिचालन सम्बन्धी कार्य गर्ने,
- द्वन्द्वको शान्तिपूर्ण रुपान्तरण गरी दीगो शान्ति कायम गर्न आदिबासी जनजाति, दलित, मधेशी, महिला, अपाङ्ग, पिछडिएको वर्ग समुदाय र क्षेत्रको समावेशीकरण र मूलप्रवाहिकरण नीति तयार गरी मन्त्रालयलाई उपलब्ध गराउने,
- मुलुकमा विद्यमान द्वन्द्वका कारणहरुको पहिचान गरी ती कारणहरुको न्यूनिकरणका लागि आवश्यक नीति तर्जुमा गर्ने,
- द्वन्द्व व्यवस्थापन तथा शन्ति प्रकृयाका बिभिन्न बिषयहरुमा नागरिक समाज तथा उक्त क्षेत्रमा कार्यरत गैरसरकारी संस्थाहरुको परिचालन तथा समन्वय सम्बन्धी कार्य गर्ने,
- शान्ति प्रकृया र द्वन्द्वको संक्रमणकालिन व्यवस्थापन
- शान्ति प्रकृया तथा द्वन्द्व व्यवस्थापनसंग सम्बन्धित सरकारी तथा गैरसरकारी अन्तर्राष्ट्रिय संघ सस्थासंग सम्पर्क गर्ने,
- बारुदी सुरुङ व्यवस्थापन (Mine Action) का लागि आवश्यक नीतिगत, संरचनागत तथा प्रक्रियागत व्यवस्था मिलाउने ।
- बारुदी सुरुङ तथा युद्धकालीन विष्फोटक अवशेषहरु हटाउने, यस्ता विष्फोटक पदार्थबाट आम जनतालाई हुने खतराबारे उनीहरुलाई जानकारी गराउने तथा यस्ता विष्फोटक पदार्थबाट घाइते वा अपाङ्ग भएका व्यक्तिहरुलाई आवश्यक सहयोग पुऱ्याउने सम्बन्धमा आवश्यक कार्यहरु गर्ने ।
- बारुदी सुरुङ व्यवस्थापन सूचना प्रणाली स्थापना तथा संचालनको व्यवस्था गर्ने ।
- नेपाल सरकारका अन्य निकायसँग बारुदी सुरुङ व्यवस्थापन सम्बन्धमा समन्वय गर्ने ।
- बारुदी सुरुङ व्यवस्थापन सम्बन्धी अन्तर्राष्ट्रिय सन्धि सम्झौताहरु बारे सम्पर्क, समन्वय तथा तत्सम्बन्धी अन्य आवश्यक कार्यहरु गर्ने ।
- बारुदी सुरुङ व्यवस्थापनको कार्यमा संलग्न विभिन्न सरकारी, गैरसरकारी तथा अन्तर्राष्ट्रिय संघसंस्थाहरुसँग समन्वय गर्ने ।
- बारुदी सुरुङ व्यवस्थापन सम्बन्धी कार्यक्रमहरुको अनुगमन, मूल्यांकन तथा प्रतिवेदनसम्बन्धी कार्य गर्ने ।

## पुर्वाधार पुनर्निर्माण महाशाखा

- द्वन्द्वका क्रममा क्षति भएका भौतिक एवं सामाजिक पूर्वाधार पुनर्निर्माण सम्बन्धि तत्कालिन तथा दीर्घकालि नीति, रणनीति एवं कार्यविधि तयार गर्ने गराउने ।

- द्वन्द्वका कारणबाट क्षतिग्रस्त भौतिक संरचनाहरुको पुनर्निर्माण तथा पुनःस्थापन योजनाहरुको कार्यान्वयन तथ समन्वय गर्ने तथा गराउने ।
- पुनर्निर्माण सम्बन्धी तथ्यांक विश्लेषण गरी अध्यावधिक गर्ने, क्षतिग्रस्त भौतिक संरचनाहरुको वर्गीकरण पुनर्निर्माणको लागि प्राथमिकीकरण गर्ने ।
- भौतिक एवं सामाजिक पूर्वाधारहरुको पुनर्निर्माणका लागि बार्षिक बजेट तथा कार्यक्रम तयार गरी स्वीकृत गराउने ।
- कार्यक्रमहरुको अनुगमन गरी मूल्यांकन गर्ने गराउने ।
- भौतिक एवं सामाजिक पूर्वाधारहरुको निर्माण तथा पुनर्निर्माणका लागि स्रोत व्यवस्थापनका लागि दातृ राष्ट्र एव निकाय, संघ, संस्थासंग समन्वय गर्ने ।
- कार्यक्रम संचालनमा देखापरेका समस्याहरु समाधान गर्ने गराउने ।
- भौतिक एवं सामाजिक पूर्वाधार पुनर्निर्माण सम्बन्धी कार्यक्रमहरुको अन्तर मन्त्रालयगत समन्वय गर्ने ।
- योजना, कार्यक्रमको तर्जुमा, कार्यान्वयन तथा अनुगमन, मूल्यांकनका सन्दर्भमा अन्तर महाशाखा एवं कार्यान्वयन गर्ने निकायबीच समन्वय गर्ने ।
- शान्ति कोष अन्तर्गतका सामाजिक एवं भौतिक पूर्वाधार पुनर्निर्माण सम्बन्धी कार्यक्रमहरुको नीति तर्जुमा गरी समन्वय गर्ने ।
- मातहत शाखाहरुको तोकिए वमोजिमका प्रशासनिक कार्यहरु गर्ने ।

## ४. निकायबाट प्रदान गरिने सेवा

- श्रृजनशील द्वन्द्व व्यवस्थापनमा सहयोग पुर्या उनु ।
- दिगो शान्तिको लागि छलफल, गोष्ठी तथा अर्न्तक्रिया र तालिम संचालन गर्नु ।
- शान्ति प्रक्रियामा देशका सम्बद्ध सबै पक्षको समर्थन र सहभागिता जुटाउन सहयोग पुर्या्उनु ।
- शान्तिको पक्षमा अन्तराष्ट्रिय सहयोग र समर्थन जुटाउनु ।
- शान्ति बहाली गर्न सरकारले गरेका निर्णयहरुको कार्यान्वयनमा सहयोग पुर्या उनु ।
- द्वन्द्व व्यवस्थापन, राहत, पुनर्स्थापन र पुनर्निर्माणको कार्ययोजना निर्माण र कार्यान्वयनमा भूमिका खेल्नु ।
- शान्ति र सहमतिको वातावरण सिर्जना गर्न अवलम्बन गर्नु पर्ने नीति तथा रणनीतिहरु बारे अध्ययन गरी राय सुझाव पेश गर्नु

## ५. सेवा प्रदान गर्ने निकायको महाशाखा/शाखा र जिम्मेवार अधिकारी

a. **प्रशासन योजना तथा वैदेशिक समन्वय महाशाखा**
   - महाशाखा प्रमुख सह सचिव मुकुन्द प्रसाद पौड्याल
   - प्रशासन शाखा प्रमुख उप सचिव देव बहादुर अधिकारी
   - योजना तथा कार्यक्रम शाखा प्रमुख उप सचिव बुद्ध बहादुर गुरुङ
   - वैदेशिक सहयोग समन्वय शाखा प्रमुख उप सचिव
   - आर्थिक प्रशासन शाखा प्रमुख उप सचिव अर्जुन कुमार पुडासैनी
   - अनुगमन तथा मुल्यांकन शाखा प्रमुख उप सचिव

b. **राहत तथा पुनस्थापन महाशाखा**
   - महाशाखा प्रमुख सह सचिव काशिनाथ मरासिनी
   - राहत तथा तथ्यांक शाखा प्रमुख उप सचिव ..........................
   - पुनस्थापन शाखा उप सचिव सुदेव कुमार पोखरेल

c. **कानुन तथा संचार महाशाखा**
   - महाशाखा प्रमुख सह सचिव (कानुन) ऋषि राजभण्डारी
   - कानुन तथा मानव अधिकार शाखा प्रमुख उप सचिव केशव कुमार पाण्डे

- सूचना संचार तथा जनसम्पर्क शाखा प्रमुख उप सचिव दामोदर भण्डारी

d. **शान्ति संयन्त्र समन्वय महाशाखा**
- महाशाखा प्रमुख सह सचिव लक्ष्मी कुमारी बस्नेत
- स्थानिय शान्ति समिति समन्वय शाखा उप सचिव भरत प्रसाद आचार्य
- आयोग समिति समन्वय शाखा -----------------------------

e. **द्वन्द्व व्यवस्थापन महाशाखा**
- महाशाखा प्रमुख सह सचिव लक्ष्मीशरण घिमिरे
- द्वन्द विश्लेषण तथा नीति निर्माण शाखा प्रमुख उप सचिव कृष्ण बहादुर शाही
- शान्ति प्रक्रिया समन्वय तथा अनुगमन शाखा प्रमुख उप सचिव देव बहादुर अधिकारी
- बारुदी सुरुंग ब्ब्बथापन शाखा प्रमुख उप सचिव प्रेम प्रसाद संजेल

f. **पूर्वाधार पुनर्निर्माण महाशाखा**
- महाशाखा प्रमुख सह सचिव(प्रा) भिम प्रसाद उपाध्याय
- भौतिक पूर्वाधार पुननिर्माण शाखा प्रमुख .......
- सामाजिक पूर्वाधार पुननिर्माण शाखा प्रमुख............

g. **द्वन्द्वोत्तर शान्ति तथा पुनर्निर्माण परियोजना**
- का.मु. परियोजना समन्वयकर्ता धुर्व प्रसाद पौडेल

h. **राहत तथा पुनस्थापन इकाई**
- निमित्त विभागीय प्रमुख हरिकृष्ण ज्ञवाली

i. **नेपाल शान्ति कोष सचिवालय**
- निर्देशक मुकुन्द प्रसाद पौड्याल

j. **सत्य निरुपण तथा मेलमिलाप आयोग को सचिवालय**
- सचिव डा.नरेन्द्रमान श्रेष्ठ

## ६. उजुरी, निवेदन उपर निर्णय गर्ने प्रक्रिया र अधिकारी

हेलो सरकार सम्पर्क व्यक्ति दामोदर भण्डारी

हेलो सरकार सम्पर्क सहायक व्यक्ति तेज बहादुर शाही

## ७. मन्त्रालयको नियमित कार्यक्रम तर्फ

- वेपत्ता पारिएका व्यक्तिको छानविन, सत्य निरुपण तथा मेलमिलाप आयोग ऐन २०७१ को दफा ३ बमोजिम निम्न पदाधिकारी रहेको दुवै आयोग गठन भै काम प्रारम्भ गरेको|

**क) वेपत्ता पारिएका व्यक्तिको छानविन आयोग (गठन मिति-२०७१/१०/२७)**

१. लोकेन्द्र मल्लिक (पूर्व मुख्यन्यायधीश) महोत्तरी अध्यक्ष

२. श्री बिजुल विश्वकर्मा दुलाल दाङ सदस्य

३. प्रा.डा. श्री विष्णु पाठक काठमाडौ सदस्य

४. श्री नरकुमारी गुरुङ (अधिवक्ता) स्यांग्जा सदस्य

५. आई बहादुर गुरुङ(अधिवक्ता) पर्वत सदस्य

**ख) सत्य निरुपण तथा मेलमिलाप आयोग (गठन मिति-२०७१/१०/२७ )**

१. सुर्यकिरण गुरुङ (पुर्व राजदुत) काठमाडौ अध्यक्ष

२. श्री लिला उदासी (वरिष्ठ अधिवक्ता) झापा सदस्य

३. श्री श्रीकृष्ण सुवेदी (अधिवक्ता) प्युठान सदस्य

४. डा. माधवी भट्ट पराजुली (समाजशास्त्री) काठमाडौ सदस्य

५. श्री मञ्जला कुमारी झा (उपप्राध्यापक) महोत्तरी सदस्य

- परिवर्तित सन्दर्भमा मन्त्रालयको कामलाई पुनरावलोकन गर्नु पर्ने अवस्था रहेकोलेमाननीय मन्त्रीज्यू उपस्थितिमा सम्वन्धित द्वन्द्वपीडितका प्रतिनिधि, स्थानिय शान्ति समितिका संयोजक, प्रमुख राजनैतिक दलका प्रतिनिधि र सरोकारवालाका प्रतिनिधिहरु संग डडेल्धुरा, नेपालगंज, पोखरा, चितवन र धरानमा क्षेत्रिय शान्ति सम्मेलन गरी अन्तरक्रिया मार्फत राय सुझाव संकलन गरियो |
- सशस्त्र द्वन्द्वको क्रममा मृत्युवरण गरेका व्यक्तिका परिवारलाई उपलव्ध गराइएको रु ३ लाख राहतमा थप रु २ लाख गरी रु ५ लाख पुर्याउन नेपाल सरकार (म.प.) को मिति २०७१/१२/१३ को निर्णयानुसार रु २ अर्ब ५० करोड अर्थ मन्त्रालयमा निकासा माग गरिएको र निकासा प्राप्त भएपछि सम्वन्धित जिल्लामा रकम पठाई राहतको प्रक्रिया अन्त्य गर्न लागिएको |
- कुल बेरुजुको सम्परीक्षणमा ३२ प्रतिशत प्रगति हासिल भएको ।
- मन्त्रालयको विस्तृत O & M Survey गरी अन्तिम मस्यौदा तयार भएको ।
- मन्त्रालयको दीर्घकालीन रणनीति तर्जुमा गर्ने कार्य अन्तिम चरणमा पुगेको तथा शान्ति कोष सचिवालयको रणनीतिक योजना तयार भई स्वीकृतीको प्रक्रियामा रहेको।
- राहत वितरण सम्वन्धी कार्य हाल सुचारु अवस्थामा रहेको, राहत सम्वन्धी लगत एकिन गरी अन्तिम प्रतिवेदन पेश गर्न गठित कार्यदलद्वारा आफ्नो कार्य गरिरहेको।
- हेलो सरकार कक्ष को गुनासो फछ्र्यौट प्रगति १०० प्रतिशत रहेको |
- पाचै विकास क्षेत्रमा राहत तथा पुनर्निर्माण सम्वन्धी कार्यको अनुगमन गर्न सह सचिवको संयोजकत्वमा प्राविधिक सहितको अनुगमन टोली गठन भई अनुगमन कार्यलाई अगाडि वढाइएको ।
- मन्त्रिपरिषदमा पेश गरिएका ५ वटा प्रस्ताव स्वीकृत भएको |
- सुचनाको हक सम्वन्धि ऐन, २०६४ मा भएको व्यवस्था वमोजिम हालसम्म ८ जना सूचना मागकर्तालाई सूचना उपलव्ध गराइएको |

## ८.आम्दानी खर्च तथा आर्थिक कारोवार सम्वन्धी अधावाधिक विवरण

**आ.व.२०७१/०७२ को चैत्र मसान्त सम्मको (रु हजारमा)**

| क.स. | ब.ऊ.शि.न. | कार्यक्रम/आयोजना | बार्षिक विनियोजित | हालसम्म को खर्च | कैफियत |
|---|---|---|---|---|---|
| १ | ३४९०११३ | शान्ति तथा पुनर्निर्माण मन्त्रालय | ६३२३३०००|- | ३२८४३८०५|०४ | |
| २ | ३४९०११४ | शान्ति तथा पुनर्निर्माण मन्त्रालय | १४४७००० | ३२२०५ | |
| ३ | ३४९१०२३ | पुनर्निर्माण तथा पुनस्थापन कार्यक्रम | ४३५०००० | ११७१५०७ | |
| ४ | ३४९८०१३ | **स्थानीय शान्ति समिति तर्फ** | ८६०००००० | ३०४८२८९ | |

प्रस्तुत विवरण मन्त्रालयको वेवसाइट www.peace.gov.np मा पनि हेर्न सकिने छ |

*शान्ति तथा पुनर्निर्माण मन्त्रालय सिंहदरवार काठमाडौ फोन न. ४२११९८९, ४२११०८९*

*फ्याक्स ४२११८६ इमेल info@peace.gov.np वेवसाइट www.peace.gov.np*

# अनिसुची १

## संगठन तालिका




सचिव